राष्ट्रिय दैनिक

# गोल्डेन न्यूज

Golden News National Daily

○वर्ष ८ ○अंक १४३ ○श्रेणी 'क' ○२०७२ फाल्गुन १४ गते शुक्रबार ○ 26 Feb. 2016 ○पृष्ठ ४ ○मूल्य रू. ५/-




## विमान दुर्घटनामा मृत्यु हुनेको शव पोखरामा

### १५ शव सनाखत, १० आफन्तको जिम्मा,८ को पहिचान खुलेन

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा १३ फाल्गुन ।**

तारा एयर जहाज दुर्घटनामा ज्यान गुमाएका २३ मध्ये १५ जनाको सनाखत भएको छ । चालक दलका तीन सहित १५ जनाको सनाखत भएको र १० वटा शव आफन्तले बुझेका छन् । सनाखत भएका मध्ये चालक दलका तीन जना पाइलट रोशन मानन्धर, को-पाइलट दिकेश नेमकुल, एयर होस्टेज रमा राउत र सिन्धुपाल्चोकका डोल्मा छिरिङ शेर्पाको शव आफन्तको बुझेर काठमाडौं लगेका छन् । गण्डकी अञ्चलका प्रहरी वरिष्ठ उपरीक्षक महेन्द्र पोखरेलका अनुसार बालकृष्ण निउरेको शव आफन्तले बुझेर बाग्लुङ लगिसकेका छन् । पोखरा फूलवारी घर भई मुक्तिनाथ गाविसका सचिव मुक्तिनाथ बाँस्तोलाको शव पनि आफन्तले बुझेका छन् । मुस्ताङकी कमला थकालीको शव पनि आफन्तको जिम्मा लगाईएको प्रहरीले जनाएको छ । पहिचान खुलेका ६ महिने बालिका, कुवेती नागरिक रसिद अहमद , नेपाली सेनामा कार्यरत राजकुमार तामाङ, स्याङ्जाका मोतीबहादुर केसी र पोखराका रेवती बरालको शब आफन्तले बुझ्न बाँकी छ । मुस्ताङका विनता भट्टचन उनका दुई महिने नावालक र कृष्णलाल भट्टचनको शब आफन्तले पहिचान गरी घटनास्थलबाटै बुझेका छन् । बाँकी ८ वटा शवको पहिचान खुल्न बाँकी छ । पहिचान खुल्न नसकेकाहरुमा चिनियाँ नागरिक माक सुई याङ, दिलकुमारी गौचन, देवीजंग गुरुङ, फेनजोक गुरुङ, लक्ष्मी हिराचन, पवित्रा केसी, लेप्साङ लामा र कान्छा परियार छन् । कतिपय शबहरु जलेको अबस्थामा रहेकाले पनि पहिचान गर्न मुस्किल भएको हो । शब पश्चिमाञ्चल क्षेत्रीय अस्पतालमा राखिएको छ । बुधवार विहान ७ बजेर ५० मिनेटमा पोखराबाट जोमसोमको उडेको तारा एयरको जहाज म्याग्दीको दाना २ सोलीघोप्टेभिरमा दुर्घटना हुँदा त्यसमा सवार सबैको ज्यान गएको हो । शुक्रवारसम्म पहिचान खुल्न नसकेका शब डिएनए परीक्षणको लागि काठमाडौं पठाईने पश्चिमाञ्चल क्षेत्रीय प्रशासक शंकर कोईरालाले जानकारी दिए । मृतकको शब एयर डाईनेष्टि हेलिकप्टर मार्फत पोखरा ल्याईएको थियो । घटनास्थल निकै विकट भएको र शवहरु तितरवितर भएका कारण नेपाली सेना, नेपाल प्रहरी र सशस्त्र प्रहरीले साढे दुई घन्टाको समय लगाएर संकलन गरी एअर डाइनेष्टीको हेलिकोप्टरमार्फत विहीवार अपरान्ह मात्र शव पोखरा ल्याएका हुन्। सुरक्षाकर्मीले हेलिकोप्टरमार्फत शव ल्याउनासाथ अस्पताल परिसरमा आफन्तजनको रुवाबासी चलेको थियो। प्रहरीले शुक्रबारबाट विमानको ब्ल्याक बक्ससहितका सामानहरुको खोजी गरिने बताएको छ ।

## प्रहरी प्रमुख अर्यालको कार्ययोजना
## अपराध नियन्त्रण प्राथमिकता

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा १३ फाल्गुन ।**

नवआगन्तुक कास्की प्रहरी प्रमुख प्रहरी उपरीक्षक घनश्याम अर्यालले १६ बुँदे कार्ययोजना सार्वजनिक गरेका छन् । उनले बिहीवार पत्रकार सम्मेलन गर्दै आफ्नो कार्यकालको कार्ययोजना सार्वजनिक गरेका हुन् । एसपी अर्यालले पहिलो प्रथामिकतामा अपराध नियन्त्रणलाई राखेका छन् । त्यसपछि घटित अपराधहरुको गहन अनुसन्धानलाई अघि सारेका छन् । पछिल्लो समय लगातार रुपमा महिलाको शब भेटिरहँदा कार्वाहीको आवाज उठिरहेका बेला उनले त्यस्ता घटनामाथि गहन अनुसन्धान गर्ने प्रतिबद्धता सहितको कार्ययोजना अघि सारेका हुन् । गुण्डागर्दी नियन्त्रण, अपराधमा सून्य सहनशिलता, ट्राफिक ब्यवस्थापन लाई पनि उनले प्रथामिकतामा पारेका छन् । अदालतबाट वारेण्ट जारी भएका फरार अपराधीहरुको खोजी र कार्वाहीलाई पनि आफ्नो कार्यकालमा अघि बढाउने उनले बताएका छन् । प्रहरीको आचरण ब्यवहारमा सुधार ल्याउँदै मुस्कान सहितको प्रहरी सेवामा उनले जोड

*बाँकी अन्तिम पृष्ठमा......*

## कांग्रेस कास्की ४ मा शर्मा विजयी

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा १३ फाल्गुन ।**

नेपाली कांग्रेस कास्की क्षेत्र नं. ४ को सभापतिमा पोषनाथ शर्मा निर्वाचित भएका छन् । प्रतिस्पर्धी मनोज गुरुङलाई ५ मतले पराजित गरेका हुन् । शर्माले १ सय १३ मत प्राप्त गरेर विजयी हुँदा गुरुङले १ सय ८ मत ल्याए । गत माघ २२ गते भएको मतदानपछि भोट गन्ने क्रममा विवाद हुँदा त्यहाँ पुन:निर्वाचन भएको हो । सचिवमा खिमलाल बाँस्तोला १ सय ४३ मत ल्याएर विजयी भए । उनका प्रतिस्पर्धी विष्णुकुमार श्रेष्ठले ७३ मत ल्याए । कोषाध्यक्षमा जीवनाथ पौडेलले १ सय २४ मत ल्याएर विजयी भए भने प्रतिस्पर्धी कृष्णप्रसाद त्रिपाठी ९० ल्याए । सदस्यमा प्रकाश चन्द्र सापकोटा र देवेन्द्र विक्रम शाहीले १ सय ५० मत, कमल बहादुर गुरुङले १ सय ४७ मत, प्रकाश बरालले १ सय ३५, कमला विन्दु बरालले १ सय ३१ मत, राजाराम पौडेलले १ सय २८ मत, गोपालप्रसाद पराजुलीले १ सय २४ मत र तीर्थबहादुर थापाले १ सय २३ मत ल्याएर विजयी भएको मतदान अधिकृत यमनाथ सापकोटाले बताए । ४ नम्बर क्षेत्रबाट महासमिति सदस्यमा शुक्रराज शर्मा, आइबहादुर गुरुङ, रामचन्द्र त्रिपाठी, दीपक गुरुङ, हरिमाया गुरुङ निर्विरोध भएका छन् ।

## प्रत्यक्षदर्शीको नजरमा दुर्घटनास्थल

तारा एयरको विमान म्याग्दीको रुप्से झरना, घोप्टेभीर लगायत स्थानमा दुर्घटना भएको अनुमान गरेपछि हामी बेनीबाट गएका थियौं। झन्डै ३० किलोमिटर गाडीमा गएपछि काब्रे भन्ने ठाउँमा पुग्यौं । त्यहाँ पुग्दा १ बजेको थियो। जतिबेला विमान केकरबुट्टा भन्ने स्थानमा दुर्घटनाग्रस्त भेटिएको खबर आयो। त्यो निकै विकट र अनकन्टार ठाउँ भएकाले हामी केही स्थानीयलाई साथ लिएर गयौं। काब्रेबाट झन्डै एक घन्टा उकालो हिँडेपछि एउटा खर्कमा पुग्यौं। जहाँ केही गोठ मात्रै थिए। मानवबस्ती काब्रे मात्रै थियो। त्यो खर्कसम्म त हिँड्ने बाटो थियो। त्यसपछिका बाटो निकै अप्ठेरा। कहिलेकाहीँ लेक-बेंसी गर्ने क्रममा भेडा मात्र हिँडाउने गरिएको रहेछ। खर्कबाट झन्डै तीन घन्टा उकालो र जंगलको बाटो हिँडेपछि हामी विमान दुर्घटना भएको स्थानमा पुग्यौं। त्यतिबेला फुसफुस पानी र हिउँ परेको थियो। तारा एयरको विमान पहाडमा ठोक्किएको रहेछ। गुराँसको जंगल भएपनि भिरालो र रुखहरू समेत नभएको उक्त स्थानमा झन्डै एक-दुई सय मिटर वरपर विमानका टुक्रा थिए। केही ठाउँमा आगो समेत बलेको थियो। त्यहाँ पुगेका सुरक्षाकर्मी र हाम्रो अनुमानमा यो झन्डै ३५ सय मिटर उचारमा पर्छ। र, घोडेपानीबाट बाटो बिराएको विमान सीधै पहाडमा गएर ठोक्किएको जस्तो देखिन्छ। स्थानीयवासीका अनुसार विमान आफ्नो उचाइमा त थियो, तर अरु दिन हिँड्ने बाटोमा थिएन। बाक्लो हुस्सु लागेको थियो। सय, दुई सय मिटरअगाडि समेत केही नदेखिने अवस्था थियो। त्यसैले ठाडो भीरमा गएर विमान सीधै जोतिएको सहजै अनुमान लगाउन सकिन्छ। धेरै जाडो भएकाले घटनास्थलमा पुगेका सुरक्षाकर्मी नजिकै आगो बालेर तापिरहेका थिए। पानी परिरहेको र आसपास मानवबस्ती समेत नभएकाले त्यहाँ धेरैबेर बस्न सम्भव पनि भएन। सुरक्षाकर्मीसँग संकलन गरिएका शवलाई ल्याउने कुनै साधन र अवस्था दुवै नभएकाले सहयोगका हामी त्यहाँ बस्नु आवश्यक पनि रहेन। हामी राति ११ बजेतिर भुरुङताल भन्ने ठाउँमा आएर बस्यौं। बाटोमा डीएसपीसहितको टोली भेट भयो। केही सुरक्षाकर्मी चाउचाउ र बिस्कुट खाएर घटनास्थलमा बसे। नेपाली सेनाको टोली भने केही तल क्याम्प बनाएर बसेको थियो। (स्थानीयको कुराकानीमा आधारित)

## हवाइ सुरक्षा प्रविधि सित्तैमा दिंदा लिएनन्-पुन

पोखराबाट जोमसोमतर्फ उडेको तारा एयरको बिमान बुधबार बिहान दुर्घटना भएर २३ जनाको ज्यान गएपछि म्यागासेसे पुरस्कार विजेता महावीर पुनले आफ्नो कम्पनीले उपलब्ध गराएको प्रबिधि प्रयोग गरेको भए सो रुटमा हवाई यात्रा बढी सुरक्षित रहने बताएका छन्। २९०० मिटरको उचाइमा रहेको मुस्तांगको लार्क्यु डाँडा र ३६०० मिटरको उचाइमा रहेको म्याग्दीको खोप्रा डाँडामा उनको संस्थाले सन् २०१० स्थापना गरेको जलवायु स्टेशनबाट छिनभरमा परिवर्तन भैरहने मौसमबारे विमानस्थल र पाइलटले जानकारी पाउन सक्ने उनको भनाइ छ।

'ती उपकरणहरुबाट इन्टरनेट मार्फत फ्लाईट रुटको रियल टाइम भिडियो र मौसम सम्वन्धी जानकारी लिन सकिन्थ्यो। त्यसका लागि एआइटी र एक्यापबाट आर्थिक सहयोग जुटाइएको थियो र नागरिक उड्डयन प्राधिकरणको एक पैसा पनि परेको थिएन।' उनले आफ्नो फेसबुक पेजमा लेखेका छन्-'ती उपकरणहरू चलाउनुहोस् भनेर जोमसोम र पोखरा एयरपोर्टमा गएर सिकाइ दिएका पनि थियौ, तर त्यसको उपयोग गरेनन्। तीन बर्ष पछि ति उपकरणहरुले सम्भार नभएका कारण काम नै गर्न छोडे।'

चाँडो परिवर्तन हुने मौसम र भौगोलिक अवस्था नै उक्त रुटमा बिमान दुर्घटना हुने प्रमुख कारण मानिन्छ । ३६०० मिटरको उचाइमा रहेको म्याग्दीको खोप्रा डाँडामा रहेको स्टेशन मुनिबाट नै प्लेनहरु उडने गर्छन्। डाँडाहरु विच २ किलोमिटर चौडाई भएको बाटो बाट जहाज उडने र त्यहाँ मौसम चाँडो परिवर्तन हुने हुनाले त्यस ठाउँमा दुर्घटनाको अधिक सम्भावना रहेको पुनको भनाइ छ।

उक्त उपकरणहरु फिनल्याण्डको विश्वविख्यात वैशाली भन्ने कम्पनिको उत्पादन भएकोकारण नेपाल वायरलेसको स्टेशनको सूचना हवाइ सेवाको सुरक्षाका निम्ति महत्वपूर्ण हुने पुनको दावी छ। नेपालमा हवाई क्षेत्रमा काम गर्ने कर्मचारीहरु लापर्वाह र निस्कृय रहने गरेको आरोप पनि उनले लगाएका छन्।

आफ्नो संस्था नेपाल वायरलेसले हवाइ यात्रा सुरक्षाका निम्ति सित्तैमा नयाँ प्रविधिहरु उपलब्ध गराउँदा पनि नागरिक उड्ययन प्राधिकरणका कर्मचारीले कुनै चासो नदिएको उनको भनाइ छ। 'म आँफै गएर बैठक समेत गरें। सामानहरु एआइटी बैंकको सहयोगमा आउने हो, यता भन्सार छुटाउनु भन्दा पनि उहाँहरु तयार हुनुभएन,' उनले भने,-'सित्तैमा सुविधा पाउँदा पनि उहाँहरूले कुनै चासो देखाउनु भएन।' यसलाई पुनले पोखरा र जोमसोम हवाई टावरको कर्मचारीहरुको 'लापर्बाही र निस्कृयताको उदाहरण' भनेका छन्।







## पोखरा उप-महानगरपालिकाद्वारा सम्बन्धित सरोकारवालाहरूको नाममा जारी गरिएको अत्यन्त जरुरी सूचना

स्थानीय स्वायत्त शासन ऐन, २०५५ फोहोरमैला व्यवस्थापन ऐन २०६८ पोखरा उप-महानगरपालिकाद्वारा जारी प्लाष्टिकजन्य वस्तु निषेध कार्यविधि २०७२ एवं उप-महानगरपालिकाको २०औं नगरपरिषद्को निर्णय बमोजिम पोखरा उप-महानगरपालिका क्षेत्रभित्र प्लाष्टिक झोला र प्लाष्टिक गिलासको उत्पादन, ओसार-पसार तथा विक्री वितरणलाई मिति २०७३ वैशाखदेखि पूर्णत: निषेध गर्दै पोखरा उप-महानगरपालिकालाई प्लाष्टिक झोला एवं प्लाष्टिक गिलास निषेध घोषणा गर्ने कार्यक्रम रहेको छ ।

तसर्थ मिति २०७२ साल चैत्र १५ गतेसम्म आ-आफ्नो मौज्दातमा रहेका प्लाष्टिक झोला एवं गिलास तत्कालै व्यवस्थापन गर्नु/गराउनुहुन अनुरोध छ। तत्पश्चात यस पोखरा उप-महानगरपालिकाबाट खटिने अनुगमन टोलीबाट अनुगमनको क्रममा उपरोक्त अनुसारको निषेधित वस्तु फेला परेमा जो कोहीलाई कडा भन्दा कडा कार्वाही भै जाने हुँदा सो अवधिभित्र प्लाष्टिक झोला एवं प्लाष्टिकका गिलास पूर्णरुपमा विक्री वितरण, उत्पादन, ओसार-पसार नगर्नु/नगराउनुहुन सम्बन्धित सबैका लागि अनुरोध छ। साथै २०७२ चैत्र १५ गते पश्चात् प्लाष्टिक झोला उत्पादन, विक्री-वितरण तथा उपयोग गरेको पाइएमा कानूनत: दण्डनीय हुने हुँदा सो नगर्नु/नगराउनु भइ पोखरा उप-महानगरपालिकालाई प्लाष्टिक झोला तथा गिलास निषेधित उप-महानगरपालिका बनाउने अभियानमा सघाउन एवं वातावरणमैत्री उप-महानगरपालिका बनाउन सहयोग गर्नुहुन सम्बन्धित सबैमा पोखरा उप-महानगरपालिका कार्यालय हार्दिक अनुरोध गर्न चाहन्छ ।

**झलकराम अधिकारी**
प्रमुख/कार्यकारी अधिकृत
**पोखरा उप-महानगरपालिका कार्यालय**
पोखरा-८, न्यूरोड

# साहित्य

## मुक्तकहरु

तीर्थराज अधिकारी

रामरी हेर स्थल भन्दा जल धेरै छ जगत्मा
कति खेर गई रहेछ विशुद्ध पानी फगतमा
विकल्पमा किन पसिनाकै पानी खान्छ मान्छे ?
कतै पानीको मात्रा खोज्ने हुन की मान्छेकै रगतमा !

❖❖❖

आकाशमा उँडु भने कावा खाइरहेको चिल छ
जमिनमा उँडु भने हावा चलिरहेको भिल छ
कहाँ उडुँ, कहाँ बसुँ, खै कहाँ गुँड लगाउँ ?
हरेक ठाउँमा दुष्ट सिकारीको मन्जील छ ।

❖❖❖

फाटेको मन चित्तले सिउन थाल्यो भने
वनस्पतिले आफ्नै फल खाएर जिउन थाल्यो भने
यो संसारमा भोक प्यास हराउँथ्यो होला !
नदीले आफ्नो जल आफै पिउन थाल्यो भने ।
मातृत्वको साइनो मेटिन थालिएका छन्
दुधमा अखाद्य वस्तुहरू फेटिन थालेका छन्
अरु के कुरा ! साना नानीले खेल्ने खेलौनामासमेत
बारुदका कणहरू भेटिन थालेका छन् ।

❖❖❖

उनी न देवता न देवी हुन्
नियमित सोम रस सेवी हुन्
कौरव र पाण्डवका साझा गुरु ती
द्रोण नै पहिलो टेष्टट्युव वेवी हुन् ।

❖❖❖

माइती भन्नु नै आमाको घर हो
अर्को नगिजको साइनो मामाको घर हो
यता गए पनि भयो, उता गए पनि भयो
रमाई-रमाई खाने त उही तीजको दर हो ।

❖❖❖

कि यो चार धाम कि तीर्थ यात्रा हो
कि यो मानसिक औषधिको मात्रा हो
पङ्क्तिवद्ध भएर दक्षिणतिर हुर्रिने क्रम
कोही भन्छन् तावेदारी त कोही भन्छन् गाई जात्रा हो ।
झोली झयाउलो एकातिर फालिसकेको छु
उहीं कोलेनी बसाउने अभियान थालिसकेको छु
यो झुत्रो संसारमा के नविनता आउला र खै ?
आफूत मंगल ग्रहमा जाने अर्जी हालिसकेको छु ।

क्रमशः

## आजको पञ्चाङ्ग

**मिति २०७२ साल फाल्गुण १४ गते शुक्रबार, तदनुसार फरवरी २६ सन् २०१६, श्रीशाके १९३७, नेपाल संवत् ११३६, कीलकनामकः संवत्सरः, सूर्य पृथ्वीको उत्तरी गोलार्द्धमा प्रवेश गरिसकेका छन् । शिशिर ऋतु चलिरहेको छ । चान्द्रमान अनुसार फाल्गुनकृष्णपक्ष चलिरहेको छ । सौरमान अनुसार आज फाल्गुनकृष्णपक्षको चतुर्थी तिथि ४९ घटि १० पला अर्थात रातिमा २ बजेर १६ मिनेटसम्म त्यसउप्रान्त पञ्चमी तिथि लाग्नेछ । आज सूर्य कुम्भ राशिमा, चन्द्रमा कन्या राशिमा अहोरात्र रहनेछ । आज दिनमान २८ घटि २९ पलाको रहनेछ । आज सूर्योदय नेपालको काठमाडौं केन्द्रबिन्दुमा रहि बिहान ठीक ६ बजेर ३६ मिनेटमा विभिषण मुहूर्तमा हुनेछ भने सूर्यास्त साझ ५ बजेर ५९ मिनेटमा हुनेछ ।**

## आजको राशिफल

**मेष** : आरोग्यता, प्रशन्नता, आर्थिक पक्ष सवल रहने, मिष्ठान्न भोजन प्राप्ति, नवीन कार्यको थालनी गर्दा राम्रो हुनेछ ।

**वृष** : परिवारसँग विवाद पर्नेछ, व्यापारीक क्षेत्रमा मन्दी आउनाले नोक्सान बढ्न जानेछ, समय खराब छ ।

**मिथुन** : आम्दानी बढ्ने, शत्रुमाथि विजयी हुने, अधुरा कार्य आज पूरा, पुराना मित्रसंग भेटघाटको अवसर मिल्नेछ ।

**कर्कट** : एक्कासी आँखामा खराबी आउन सक्ने, धनमाल चोरी हुन सक्नेछ, आफूले गरेको कार्यमा बिरोधी बढ्नेछन् ।

**सिंह** : स्वास्थ्य राम्रो रहनेछ, आदर सत्कार पाइने कार्यमा सरिक हुन पाइने, पारिवारिक सहयोग पाइने, प्रेम प्रसँग समधुर ।

**कन्या** : टाढाबाट धन प्राप्ति हुन सक्नेछ, नयाँठाउँको भ्रमण गर्दा मनमा आनन्द, राजनीतिक सक्रियता बढ्नेछ ।

**तुला** : गरेको सबै कार्यमा बाधा हुने, मानसिक अशान्ति, यात्रामा कठिनाई हुने, चिन्तापर्ने समाचार प्राप्त हुनेछ ।

**वृश्चिक** : एक्कासी नयाँ वस्तु फेला पर्ने, उत्कृष्ट सरकारी सम्मान पाउन सकिने, शैक्षिक क्षेत्रबाट उत्कृष्ट नतिजा हाँसील ।

**धनु** : साथी संगीहरुसँग कलह, पेट वा कम्मरको रोग लाग्ने, मनपरेको खानामा अवरोध आउनेछ, दिन खराब छ ।

**मकर** : गरेका कार्य अधुरा हुनेछन, यात्रा तथा कार्यमा बाधा, आफ्नो बारेमा आफन्तलेनै कुरा काट्ने छन् ।

**कुम्भ** : विद्यामा प्रगति हुनेछ, प्रेम प्रसङ्ग सफल रहनेछ, यात्रा फलदायी, आर्थिक वृद्धि हुन सक्ने, दिन शुभ छ ।

**मीन** : आफन्तको टकरावले दिनभर तनाव, पेशाप्रति असन्तुष्टि, आम्दानीमा गिरावट, अनावश्यक झमेला थपिनेछ ।

**राशिफल लेखक : युवा ज्योतिषी हरि पन्त, मो.९८४६१४७३६९**

# साहित्य/सिर्जना

## कथा सन्दर्भ र नित्यानन्दको 'बाँच्ने रहर'

उत्तमकृष्ण मजगैयाँ

१९ औं शताब्दीदेखि एउटा छुट्टै विधाको रुपमा विकसित हुँदै गएको आधुनिक नेपाली कथाले एउटा निश्चित सिद्धान्त र गोरेटोबाट हिंड्दै प्रयोग र शिल्पका दृष्टिले आज निकै विस्तृत स्वरुप पाइसकेको छ । वर्तमान समयमा जीवन जति-जति जटिल र व्यस्त हुँदै गइरहेको छ त्यति नै कथा, लघु कथा(तथा सूत्र कथा पनि) निकै लोकप्रिय विधाका रुपमा स्थापित भइरहेको छ । नेपालको सन्दर्भमा हेर्दा कथाकार गुरुप्रसाद मैनालीको 'नासो' (विसं. १९९२) बाट थालनी भएको नेपालको आधुनिक कथा-यात्रा पुष्कर शमशेर, रुपनारायण सिंह, तारिणीप्रसाद कोइराला, दौलतविक्रम विष्ट, विपि कोइराला, गोविन्दबहादुर मल्ल 'गोठाले', मदनमणि दीक्षित, भवानी भिक्षु, रमेश विकल, इन्द्रबहादुर राई, डा. ध्रुवचन्द्र गौतम, पोषण पाण्डे हुँदै पारिजात, परशु प्रधान, सनत रेग्मी, गोपाल पराजुली, अशेष मल्ल, खगेन्द्र संग्रौला, राजव, नारायण ढकाल, मञ्जु का'चुली, वेदकुमारी न्यौपाने, सीता पाण्डे, माया ठकुरी, मधुवन पौडेल, ध्रुव मधिकर्मी, ध्रुव सापकोटा, भाउ पन्थी, गोविन्द गिरी 'प्रेरणा', उत्तमकृष्ण मजगैया', इन्द्रकुमार श्रेष्ठ 'सरित', नरेन्द्रराज पौडेल, महेशविक्रम शाह, आमोद भट्टराईसम्म आइपुगेको छ । यस्ता नामहरुको एउटा लामै सूची बन्न सक्छ । राजधानी र मोफसलका गरी अहिले पनि सयौं कथा-लेखक पूर्ण सीप र खिपका साथ सिर्जनरत छन् । डा. ध्रुवचन्द्र गौतम, गोपाल पराजुली, ध्रुव मधिकर्मीलगायत कतिपय साधकहरुले नवीन प्रयोगद्वारा यस विधालाई थप गति प्रदान गरेका छन् । देश बाहिरका नेपाली कथाकारहरुले पनि सार्थक योगदान दिएकै छन् । यसरी हेर्दा नेपाली कथा साहित्य निकै समृद्ध रहेको छ भन्नुपर्छ ।

लोककथा र गीति लोककथा(थारु, मगर र ब्राह्मण-शास्त्रीय नीतिकथा) क्षेत्रमा दाङ समृद्ध नै रहेको छ । यिनै लोककथाहरुको आधारभूमिमा आधुनिक कथाको जग बसेको हो भन्न सकिन्छ । दाङको आधुनिक कथासन्दर्भमा हेर्दा निकै थोरै लेखकहरुले मात्र यस विधामा कलम चलाएको पाइन्छ । वनारसबाट प्रकाशित उदय पत्रिका( वर्ष १४, अंक १२, २००८) मा प्रकाशित मीन दङाली( मीनकेतन शर्मा घिमिरे) को 'विरहीको पत्र' शीर्षकको कथालाई नै दाङको पहिलो प्रकाशित कथाको रुपमा लिन सकिन्छ । त्यसपछि उदय, सन्देश(२०१४), ज्योत्स्ना( २०१५) जस्ता पत्रिकाहरु प्रकाशित हुँदै गर्दा कविता र निबन्ध विधाका साथै लेखकहरुले कथाको प्रकाशनतिर पनि रुचि लिएको पाइन्छ । तर पूर्ववर्ती लेखकहरुले यसलाई निरन्तरता नदिएको र पुस्तक प्रकाशनतिर पनि कुनै चासो दिएको पाइन्न । उत्तरवर्ती केही लेखकहरुले भने कथामा थोरै-थोरै कलम चलाएका छन् तथा पत्रपत्रिकामा पनि फुट्कर रचना प्रकाशन गर्नुका साथै केही कृतिहरु पनि प्रकाशन गर्ने जमर्को गरेका छन् । कथा विधाको पहिलो प्रकाशित कृति भने नित्यानन्द शर्माको 'बाँच्ने रहर'-(२०४५) नै हो । यसपछि मात्रै अन्य केही स्रष्टाहरुले आफ्नो कथाकृति प्रकाशनतिर चासो दिएको देखिन्छ । दुर्गाप्रसाद लामिछानेको 'अपराधी को ?'-(२०४८), शेरबहादुर चौधरीको 'टुक्रिएको जिन्दगी'-(२०४८), बलदेव मजगैयाँको 'संकल्प'-(२०५३), बासुदेव भण्डारीको 'परिवेश'-(२०५५), सूर्यनाथ सापकोटाको 'घायल मुटु'-(२०५६) र 'फुल्दै झर्दै, झर्दै फुल्दै' सूत्रकथा-(२०६०), मेदिनीकुमार केवलको 'पि.ए.को बिहे'-(२०५८), उत्तमकृष्ण मजगैयाँको 'बेंसीतिर'-(२०५९) कृष्ण सर्वहारीको 'मामा-भाञ्जा'-(लोककथा संग्रह-२०६०) र 'सुख्ली'-(बालकथा संग्रह-२०६२), गोविन्द कुसुमको 'तन्द्राभित्रको अतीत'-(२०६०), सूर्य विसीको 'ठूल्दाइको सपना'-(२०६०) र 'जोजोले जोगायो'-(बाल कथासंग्रह २०६२), सविन प्रियासनको 'सपनाभित्रको सपना'-(२०६२) पद्मप्रसाद शर्माको 'उपहार'-(२०६२), के.एल. पीडितको 'झोला र सपनाहरु'-(२०६२), सरला रेग्मीको 'चुँडाल्दै बन्धनहरु'-(२०६४), सुनिल पोखेलको 'नेपाली विज्ञान कथासंग्रह'-(सम्पादन-२०६७), गुरुप्रसाद शर्मा रेग्मीको 'मनका पाइलाहरु'-(२०६८), छविकिरण वलीको 'धुवाँमा रुमल्लिएको कोठा'-(२०६९), राधा गौतमको 'यात्रा'-(२०७१) जस्ता केही कृतिहरु प्रकाशित रहेका देखिन्छन् । रमेश क्षितिज, शरद देवकोटा, इन्द्र विवश डिसी, लेनिन बञ्जाडे, महेन्द्र महक, दिल महरा, नारायण विवश, दीपक घिमिरे, विष्णु आर्ट, सौगात आचार्य, सहदेव श्रेष्ठ, बसन्त विवश आचार्य, खिमु केसीलगायत कतिपय स्रष्टाहरुका पनि फुट्कररुपमा कथा प्रकाशित भएका पाइन्छन् । अधिकांश कथाकारका रचनाहरुमा शैल्पिक उचाइ र नवीन प्रयोगको प्रायः अभाव पाइन्छ । तर नयाँ पुस्ताका लेनिन बञ्जाडे, महेन्द्र महक, दिल महरा, दीपक घिमिरे, बसन्त विवश आचार्य, खिमु केसीलगायत केही स्रष्टाहरु भने प्रशस्त सुखद सम्भावना र नयाँ सीप बोकेर आएको आभास हुन्छ । यति पूर्व-चर्चापछि अब मूल विषय अर्थात् नित्यानन्द शर्माको 'बाँच्ने रहर' नामक कथासंग्रहमै केन्द्रित रहन चाहन्छु । प्रायः गीत र फुट्कर कविता लेखेर प्रशस्त चर्चा पाइसकेका दाङका साहित्यकार नित्यानन्द शर्मा(२००९) ले सर्वप्रथम २०४५ सालमा 'बाँच्ने रहर' कथासंग्रह प्रकाशन गरेर दङाली कथा साहित्यको प्रथम कृतिकारका रुपमा आफ्नो पहिचान दिन सफल भएका छन् । विभिन्न सामाजिक विषयवस्तुमा संरचित प्रायः लघु-मध्यम स्वरुपका जम्मा १६ थान कथाहरु यसमा संकलित रहेका छन् । यस आलेखमा उनको यही संग्रहभित्रका कथाबारे चर्चा गर्ने केही जमर्को गरिएको छ ।

शिक्षा पुरस्कार(२०३९ र २०४५), यादव प्रतिभा पुरस्कार(२०५०), वम-शंकर पुरस्कार(२०५६)बाट सम्मानित भइसकेका शर्मा विभिन्न सामाजिक तथा साहित्यिक संघसंस्थासित आवद्ध छन् । यिनले ज्योत्स्ना, राप्तीदूत, प.नि. स्मारिका, गंगालगायत केही पत्रपत्रिका र 'राप्तीका गीत' एवं केही स्मृतिग्रन्थको सम्पादन पनि गरेका छन् । पछिल्लो समयमा यिनी दङाली पर्यटकीय क्षेत्रहरुको विशेष अध्ययन-लेखन र बालकविता रचनामा बढी एकोहोरिएका देखिन्छन् र यिनको 'जूनमामा'-(बाल कवितासंग्रह-२०६३) पनि प्रकाशित रहेको छ । तर यिनको विशेष साहित्यिक प्राप्ति र पहिचान भने 'बाँच्ने रहर' नामक यही कथासंग्रह नै बनेको छ । यिनको कृतित्व र व्यक्तित्वको विषयमा कान्ति भुसालले २०६९ मा शोधपत्र तयार गरिसकेकी छन् ।

'बाँच्ने रहर'मा संकलित कथाहरुमध्ये आख्यान तत्व र रस, भावका दृष्टिले बाँच्ने रहर, प्रतीक्षा, विवशता, कति बोकेर हिंड्ने रित्तो जीवन शीर्षकका कथाहरु सापेक्षतामा राम्रा छन् । लेखकद्वारा 'रहरमै लेखिएका' भनिए पनि सामाजिक विषयवस्तु, सरल र सुबोध शैली तथा कथ्यको रोचकताका कारण पठनीय बनेका छन् । यी कथाहरु मौलिक र सुन्दर छन् तथा आफ्नै वरिपरिको परिवेशमा भएका, आफू परिचित रहेका, देखे-भोगेका जस्ता यथार्थपरक र विश्वसनीय लाग्छन् । प्रायः गुरुप्रसाद मैनालीकै परम्परा पछ्याएझैं लाग्ने यिनका कथाहरुको अध्ययन गर्दा यिनी एक आदर्शोन्मुख कथाकारका रुपमा देखिन्छन् । एक अनुकरणीय सामाजिक व्यक्तित्व प्राप्त गर्न सफल शर्माका कथा पनि सुधारात्मक पक्षतिर बढी केन्द्रित रहेका देखिन्छन् भने कतै-कतै उपदेश जस्ता पनि लाग्छन् । तर पढ्दा पट्यार लाग्ने, बोझिलो र निरस भने छैनन् ।

कथाकार नित्यानन्द शर्माले आफ्नै गाउँ-परिवेश र आफ्नै भोगाइ तथा आफू बसे-भिजेको समाजको सुख-दुखात्मक स्थिति र अवस्थालाई नै कथाको विषयवस्तु बनाई रोचकताका साथ प्रस्तुत गरेका छन् । त्यसैले पनि यी कथाहरु प्रायः यथार्थकै सन्निकट रहेका छन् भन्नुपर्छ । कथाका अधिकांश पात्र-पात्राहरु ग्रामीण परिवेशबाटै सिर्जित छन् भने त्यहा'को झगडा र मेल, साहुको ऋणबाट आक्रान्त सोझो निमुखो व्यक्ति र लाहुरे-विवशता, चरम आर्थिक विपन्नता र जीवन-संघर्ष देख्न सकिन्छ । तर निराशा र उद्वेगका बीचमा पनि जुझेरै बा'च्ने रहर एवं जीवन र जगतप्रतिको आस्था र सकारात्मक धारणा रहेको देख्न पाइन्छ यी कथाका पात्रहरुमा । यस्तो पात्रले दुःख र अभावका कारण परदेशमा हेलिनु परेको लाहुरेको चिठी पढी वाची सुनाउ'छ उसकी विरहिणी-गर्भिणी पत्नीलाई, अनि उसका आँसु टिपेर पत्र लेखी प्रेषित गरिदिन्छ उसको विवश लाहुरे पतिलाई । यही क्रममै करुण कथा आफै विकसित भई पाठकको मनलाई छोएर उसको मथिङ्गल मथ्न थाल्छ । पाठक केही क्षुब्ध, केही आक्रोशित र केही संवेदित बन्न बाध्य हुन्छ ।

आख्यानकार शर्माका कथाहरुमा आफ्नै वन-मेलापात, आफ्नै खोला-खर्क, आफ्नै खेत-खलिहान र आफ्नै मन-माटोका शब्द-चित्र भेटिन्छन् । साँच्चिकै आफ्नो माटोप्रतिको मोह र माया पाइन्छ भने संघर्ष, युद्ध र द्वन्द्वका बीच पनि निर्द्वन्द्व बाँच्ने चाहना र जीजिविषा देखिन्छ । समग्रमा 'बाँच्ने रहर'को सारभूत तत्व पनि यही हो जसले पुस्तकको शीर्षकलाई पूर्ण सार्थकता प्रदान गरेको छ । यी कथाभित्रका अधिकांश सत्पात्रहरु खलपात्रहरुबाट सताइएका, नंग्र्याइएका, चपाइएका क्षतिग्रस्त मानसिकताका छन् तर चाडपर्व, विवाह वा यस्तै कुनै खास अवसरमा ऋण काढेरै भए पनि पुनः टाउको उठाएर गाउन नाच्न थालिहाल्छन् मादल ठोक्दै । जस्तोसुकै निराशाका बीच पनि आशामुखी बन्दै एकछिन भए पनि कति छिट्टै भारमुक्त अनुभव गर्न सक्छन् यी सरल हृदयका गाउँले बन्धुहरु !

यिनका निष्कपट र निश्छल व्यवहार यथार्थ परिवेशमा पनि र नित्यानन्द शर्माका कथाभित्र पनि सहज अनुभव गर्न सकिन्छ । त्यसैले पनि यिनका कथाहरु 'बाँच्ने जीजिविषा र असहज परिस्थिति बीचको संघर्षगाथा नै हुन्' भन्न सकिन्छ । यिनका पात्रहरुले डुब्दाडुब्दैको घामलाई पनि आशामुखी भएर भोलि हुने सूर्योदयको सापेक्षतामा हेर्ने गर्छन् । बरु दुःखसँग पौंठेजोरी खेल्छन्, जीवन हार्दैनन् ।

कथाकार शर्माले आफ्ना केही कथामा प्रेम र यौनलाई पनि स्थान दिएका छन् । यस्ता कथाहरु विशेष वर्ग र खास आयु समूहका पाठकहरुद्वारा बढी पढिन्छन् र रुचाइन्छन् पनि । खासगरी प्रेम र वियोगका यी कथाहरु युवा र किशोरवयका विद्यार्थी-पाठकहरुबीच बढी लोकप्रिय बनेका पनि पाइएका छन् । तर अल्लारे बैंसमा यदि होश राखिएन भने त्यसको परिणाम नकारात्मक हुन सक्छ भन्ने सन्देश र चेतावनीका साथ कथाकारले सुधारवादी दृष्टिकोण राखेको पनि पाइन्छ । यसरी यिनका कथाले खास उमेर समूहका पाठकहरुलाई सचेत तुल्याउँदै मार्गदर्शन पनि गरेका छन् । आख्यानकार शर्मा गीतकार पनि भएकाले यिनका केही कथामा बीच-बीचमा गीतका बोल पनि राखिएको पाइन्छ । जस्तैः

*'जति रोए पनि मनको बह पोखिदैन'*
*(अधुरो रेखा- पृष्ठ १६)*
*'जहा'सुकै गए पनि फगत तिम्रै रहनेछु*
*जति दुःख गरे पनि तिम्रै साथ रहनेछु ।'*
*(विछोड- पृष्ठ १०)*
*'सम्झे कहिलेकाहीं बाडुकी बनी आउने छु ।'*
*(स्मृतिका पानाहरु- पृष्ठ ४५)*

लेखकको प्रशंसामा मात्र सीमित नरही कथामा रहेका केही कमीकमजोरी पनि औंल्याइदिएमा लेखकका लागि राम्रै होला भन्ने धारणा राख्दै यहाँ केही कमजोर पक्षतिर पनि दृष्टि दिने प्रयास गरिएको छ । कथाकार शर्माको आफ्नै निजी र विशिष्ट शैली छ । तर विषयवस्तु र भाषा शैलीमा नया'पन र प्रयोगको भने प्रायः अभाव रहेको छ । आख्यानमा विचार-अभिव्यक्तिका लागि संवादको निकै ठूलो भूमिका रहन्छ तर यिनका कथामा संवादको प्रायः कमी नै रहेको छ । कथामा लेखक स्वयं आफै बोलेका छन् । वर्णनात्मक-विवरणात्मक शैलीले रोचकतामा केही कमी ल्याएको छ भने कथाका विषयवस्तुमा पनि खासै त्यति भिन्नता र विविधता नभएकैले एकसार वा एकरसता पाइन्छ । यस्तै, कथाहरुमा कौतुहलता र उत्सुकताको पनि प्रायः अभाव नै देखिन्छ । भाषा र मुद्रणमा पनि असावधानीवश केही त्रुटि र असुद्धि रहन गएको छ । प्रायः सबै कथाले कलाको टड्कारो आग्रह गर्दछन् भने चरमोत्कर्षको पनि प्रायः अभाव देखिन्छ । धेरैजसो कथाहरुको अन्त्य पाठकले पहिले नै अनुमान गर्न सक्छन् । वास्तवमा कथा चरम अवस्था( ऋथिभह) मा पुगेर मात्रै एकाएक टुंगिनुपर्छ । कथामा घटनाक्रम क्रमशः विकसित हु'दै चरमोत्कर्षको जुन सीमानेर पुगेर त्यसको प्रभाव सकिन्छ त्यहींनेर कथा पनि टुंगिन्छ, टुंगिनुपर्छ । यस्तो अवस्थामा पाठक स्तब्ध बन्छ, हतप्रभ या विस्मित संमोहित हु'दै आनन्दातिरेकले रोमाञ्चित हुन्छ । कहिलेकाहीं त भावातिरेकले रुन्छ वा हा'स्छ पनि । कथाको प्रभावले उत्तेजित बनेको पाठकको मस्तिष्क एकछिन अडेर केही सोच्न बाध्य बन्छ र आफ्नो केही स्वतन्त्र विचार बनाउन थाल्छ । यसरी सुन्दर र प्रभावकारी कथाले पाठकको हृदयलाई पगाल्छ भने उसको चेतना-ब्रह्मलाई पनि झक्झक्याइदिन्छ । आफ्ना कथामा यस्तो उत्कृष्ट प्रभाव उत्पन्न गर्न कथाकार शर्माले अझै थप अभ्यास गर्नुपर्ने देखिन्छ ।

कथा जीवनको नौलो सृष्टि हो, त्यसको पुनर्जन्म हो । उपन्यासमा रहेझैं कथामा वास्तविक जीवनका सम्पूर्ण कुराहरु हु'दैनन् बरु त्यसको एउटा प्रभाव मात्र उपस्थित रहन्छ । तर जीवनको अर्थ वा सारको झलक भने यसमा रहन्छ । आख्यानकार नित्यानन्द शर्माका कथामा पनि पाठकलाई जीवनको यही सार-तत्व वा अर्थको अन्तर्बोध हुन्छ । देवकोटाको कथन जस्तै यिनले पनि कथारुपी अ'खिझ्यालबाटै आफ्नो समाज र आफू बा'चेको समयलाई चियाएका छन् । जीवन र जगतको सार्थक रुप निर्माण गर्नु नै कथा लेख्नुको मुख्य उद्देश्य रहे जस्तै यिनका कथा पनि समयसापेक्ष र समाजसापेक्ष रहेका छन् भन्न सकिन्छ । सुन्दर र सार्थक कथा लेख्न अभ्यस्त भइसकेका कथाकार नित्यानन्द शर्मा आफ्ना पछिल्ला दिनमा कथा-लेखन तथा प्रकाशनमा त्यति सक्रिय देखिएका छैनन् । बालगीत वा बालकविता लेखनमै प्रायः एकोहोरिएका शर्माले कथा-लेखनलाई पनि निरन्तरता दिनैपर्छ किनभने दाङको साहित्यिक फा'टमा स्पष्ट पहिचानसहित यिनको सवल उपस्थितिका साक्षी भनेका यिनका यिनै कथाहरु नै हुन् । बरु म यिनको कथा-शिल्प अरु खारियोस् र राष्ट्रियरुपमै यिनको स्पष्ट पहिचान बनोस् भन्ने शुभकामना व्यक्त गर्दछु ।

## गुरुङ फिल्म अवार्ड वितरणको तयारी पुरा

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा १३ फाल्गुन ।**

प्रथम गुरुङ फिल्मस् अवार्डको तयारी पुरा भएको छ । आयोजक जक्शन डटकमले आगामी फागुन १५ गते पोखरामा हुने अवार्डका सम्पूर्ण तयारी पुरा भएको जनाएको हो । यसअगाडि दुई दिनसम्म हुने भनिएको अवार्ड वितरण कार्यक्रम अब एक दिनमात्रै हुने पनि उसले जनाएको छ । गुरुङ फिल्म एशोसियसनको संरक्षकत्वमा जक्शन डटकमले अवार्ड कार्यक्रम आयोजना गरेको हो । कार्यक्रम शनिबार विहान ११ बजेदेखि संचालन हुने जक्सन डटकमका प्रमुख कार्यकारी अधिकृत भुपालकुमार गुरुङले जानकारी दिए । 'हामीले अवार्ड कार्यक्रममा एउटा लाईफटाईम अचिभमेन्ट अवार्ड सहित ६९ वटा शीर्षकमा अवार्ड वितरण गर्नेछौं ।' गुरुङले भने-'कार्यक्रमका लागि आवश्यक तयारी सबै पुरा भैसकेको छ ।' अवार्ड कार्यक्रमलाई गृहमन्त्री शक्तिकुमार बस्नेत प्रमुख अतिथिको रुपमा उपस्थित हुने आयोजकले बताएको छ ।

कार्यक्रममा नेपाल चलचित्र विकास बोर्डका अध्यक्ष राजकुमार राई, अभिनेता राजेश हमाल, विजय लामा, दयाहाङ राई, अभिनेत्री रेखा थापा, झरना थापा, नम्रता श्रेष्ठ, दिया मास्के, निर्देशक भूषण दाहाल, रामबाबु गुरुङ लगायत विशेष अतिथिको रुपमा रहने व्यवस्थापक अरुण गिरीले जानकारी दिए। 'पहिलोपटक हुन लागेको अवार्ड कार्यक्रम भएकोले हामीले अवार्डमा सहभागि सम्पूर्ण चलचित्रलाई नोमिनेशनमा राखेर निर्णय गरेका छौं ।' गिरीले भने-'निर्णायकहरुले गरेको निर्णय त्यहि दिन सार्वजनिक गरिनेछ ।' त्यस्तै पपुलर फिल्म, अभिनेता र अभिनेत्री छनौटका लागि खुला गरिएको भोटिङको अन्तिम नतिजा पनि सोहि दिन सार्वजनिक गरिने आयोजकले बताएको छ । 'पपुलर अवार्ड'का लागि २१ वटा फिल्म, १५ जना अभिनेता र ११ जना अभिनेत्री मनोनयनमा परेका छन् । अवार्ड यतिबेला गुरुङ फिल्मकर्मीहरुमाझ निकै चर्चाको विषय बनेको छ । पहिलोपटक हुन लागेको 'गुरुङ चलचित्र अवार्ड'कै लागि कलाकारहरुले विभिन्न खाले तयारी गरिरहेका छन् । कतिपय कलाकारहरुले अवार्डको दिनमा आफ्नो प्रस्तुति राख्नका लागि यतिबेला रिहर्सल गरिरहेका छन् । विशेष गरि अभिनेता अभिनेत्रीहरुलाई अवार्ड हुने दिनको पर्खाई अझै बढि देखिन्छ । रेड कार्पेटमा पोज दिनुसँगै अवार्ड आफ्नो पोल्टामा पार्ने सपना साँचेका फिल्मकर्मीहरु अवार्डका लागि निकै उत्साहित छन् ।

## ध्रुव उच्च माविमा नयाँ समिति

**पोखरा १३ फाल्गुन ।**

ध्रुव उच्च मावि थुमाकुडाँडा ८ तारकाङ् कास्कीमा बसेको अभिभावक भेलाले भोजराज सापकोटाको अध्यक्षतामा विद्यालय व्यवस्थापन समिति गठन गरेको छ। समितिका अन्य सदस्यहरुमा सीता भुजेल, ईन्द्रबहादुर भुजेल, महेन्द्रबहादुर भण्डारी र सदस्य सचिवमा शुक्रराज सापकोटा रहेका छन्। यसैगरी भेलाले तेजप्रसाद सापकोटाको अध्यक्षतामा शिक्षक अभिभावक संघसमेत गठन गरेको छ। समितिको सदस्यमा बुद्धिनाथ ढकाल, गीता सापकोटा, जोखे वि.क., रीता क्षेत्री, कल्पना वि.क., चन्द्रा लामिछाने, बुँदे परियार रहेका छन्। साथै समितिका अन्य पदाधिकारीहरु पछि मनोनयन गरिने विद्यालयका प्रधानाध्यापक शुक्रराज सापकोटाले जानकारी दिए।

## बाल विद्या मन्दिरमा बिदाई

**पोखरा १३ फाल्गुन ।**

बाल विद्या मन्दिर सेकेण्डरी बोर्डिङ स्कुल पोखरा १२ मियाँपाटनले बिहीबार विद्यार्थी बिदाई कार्यक्रम सम्पन्न गरेको छ। कार्यक्रममा प्रवेशिका परीक्षाको तयारीमा रहेका कक्षा १० विद्यार्थीहरुलाई विद्यायले बिदाई गरेको थियो। विद्यालयका निर्देशक श्रीमान गुरुङको अध्यक्षतामा भएको कार्यक्रममा प्रधानाध्यापक कमल गुरुङले शुभकामना मन्तव्य व्यक्त गरेका थिए। कार्यक्रममा कक्षा १० का छात्र अन्जन पराजुली र छात्रा पवित्रा गुरुङले मन्तव्य व्यक्त गरेका थिए। यसैगरी कक्षा ९ की छात्र रोशनी श्रेष्ठले दाजुदिदीहरुको उज्ज्वल भविष्यको कामना गर्दै आफ्ना भनाई राखेकी थिइन्। शिक्षक भरत सुनारले कविता सुनाएको कार्यक्रममा सांस्कृतिक कार्यक्रम प्रस्तुत गरेका थिए। कार्यक्रमको सञ्चालन कक्षा ९ का छात्रा फातुमा खातुन र अञ्जली सिकेले गरेका थिए।

# जलवायु परिवर्तनको जोखिम बारे अभिमुखीकरण

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा १३ फाल्गुन ।**

नेपालमा जलवायु परिवर्तनको जोखिमलाई मध्यनजर गरी विकास योजना तर्जुमा प्रक्रिया मूल प्रवाहीकरण गर्न स्थानीय विकास योजना प्रक्रियामा संलग्न रहने योजनाकारहरुमा क्षमता अभिबृद्धि तालिम पोखरामा जारी रहेको छ । तालिमको तेस्रो दिन विहिवार जलवायु परिवर्तनको हिसावले संकटासन्नता विश्लेषण सम्वन्धी विषयमा केन्द्रित रहेर प्रशिक्षण दिईएको थियो भने यसअघि जलवायु परिवर्तन र यसले पारेका असरहरु, अनुकुलनताका उपायहरु लगायतका विषयमा प्रशिक्षण दिईएको थियो । तालिममा सैद्धान्तिक ज्ञानसँगै सहभागितामा पनि जोड दिएको छ । तालिमको चौथो दिन शुक्रवार जलवायु परिवर्तनका अनुकुलन योजनाको अनुगमन र मूल्यांकन लगायतका विषयमा प्रशिक्षण दिइने र पाँचौं दिन शनिवार जलवायु संकटासन्नताको विश्लेषण गर्ने र अनुकुलन योजनाको तर्जुमा अभ्यासको निमित्त कास्कीको ढिकुरपोखरी ३ र ४ नम्बर वडाको फिल्ड अवलोकन गर्ने बताईएको छ ।

फागुन ११ गते मंगलवारदेखि शुरु भएको तालिम १६ गतेसम्म सञ्चालन हुनेछ । उक्त तालिममा जिल्लाका स्थानीय निकायका योजना निर्माणमा कार्यरत अधिकारीहरु, विषयगत कार्यालयका अधिकृत एवं प्रतिनिधिहरु, संचारकर्मी, स्थानीय गैरसरकारी संस्था एवं नागरिक समाजका प्रतिनिधिहरु तथा गा.वि.स प्रतिनिधिहरु समेत गरी २६ जनाको सहभागिता रहेको छ ।

जलवायु परिवर्तन, यसले विभिन्न विषयगत क्षेत्रहरुमा पारेको असर एवं प्रभावहरु, संकटासन्नताको विश्लेषण, जलवायुमैत्री योजना तर्जुमा र स्थानीय विकास योजनामा मूल प्रवाहीकरण गर्नका लागि आवश्यक ज्ञान तथा सीप हासिल गर्ने तालिमको उद्देश्य रहेको छ ।

तालिमको मुख्य सहजकर्ताको रुपमा रुपान्तरण नेपालको कार्यक्रम तथा सेवा व्यवस्थापक सोहनलाल श्रेष्ठ रहेका छन् भने यस तालिमको टोली नेता बलबहादुर शाही र कृषि तालिम निर्देशनालयका तालिम अधिकृत दिपक भट्टराईले सहजीकरण गरेका छन् । नेपाल सरकार जनसंख्या तथा वातावरण मन्त्रालय, विकास आयोजनाहरुमा जलवायु परिवर्तन जोखिम व्यवस्थापन मूलप्रवाहीकरणको आयोजना र जिल्ला विकास समिति, कास्कीको संयोजनमा तालिम सञ्चालन भएको हो ।

नेपाल सरकारसँगको समन्वयमा परियोजनाका गतिविधिहरुको कार्यान्वयन रुपान्तरण नेपालको नेतृत्वमा सामुहिक अभियान, गा.वि.स राष्ट्रिय महासंघ नेपाल र नेपाल वातावरण पत्रकार समूहले गरिरहेका छन् । यस्तै जिल्ला स्तरीय तालिमको पहिलो चरणमा मध्यमाञ्चल र पूर्वाञ्चल जिल्लाका ३१ वटा जिल्लामा सम्पन्न भईसकेको छ भने दोस्रो चरणमा आगामी डिसेम्वरसम्ममा ३० वटा जिल्लामा तालिम सञ्चालन गर्ने लक्ष्य राखिएको छ ।

# प्लाष्टिक झोला निधेषबारे वडामा छलफल

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा १३ फाल्गुन ।**

प्लाष्टिकको प्रयोगले मानव स्वास्थ्यमा असर गर्नुको साथै प्रदुषण बढाएको भन्दै पोखरा उपमहानगरपालिकाले आगामी बैशाख १ गते औपचारिक कार्यक्रमको आयोजना गरेर प्लाष्टिक झोला र प्लाष्टिकका गिलास निषेधित क्षेत्र घोषणा गर्ने तयारी गरेको छ । स्थानीय स्वायत्त शासन ऐन २०५५, फोहोरमैला व्यवस्थापन ऐन २०६८ अन्तर्गत पोखरा उपमहानगरपालिकाले प्लाष्टिकजन्य वस्तु निषेध कार्यविधि २०७२ समेत पारित गरिसकेको छ । नगरपालिकाको १८, १९ र २० औं नगरपरिषद्बाट समेत पारित प्लाष्टिक झोला निषेध सम्बन्धि निर्णयलाई आगामी नयाँ बर्षदेखि कार्यन्वयनमा ल्याउने तयारी गरेको हो । उप-महानगरपालिकाले प्लाष्टिक झोला तथा गिलास निषेधित क्षेत्र घोषणा गर्नका लागि 'वडा स्तरीय प्लाष्टिक झोला समस्या, पहिचान तथा समाधान सम्वन्धी सचेतना एवम् अन्तर्क्रिया' कार्यक्रमको शुरुवात गरेको छ । अभियानको तेस्रो दिन अन्तर्गत रामेश्वर मन्दिर फुलवारीमा पोखराका वडा नं. ११, २० तथा २१ का सरोकारवालाहरु संग उप-महानगरपालिकाले अन्तर्क्रिया कार्यक्रम सम्पन्न गरेको हो । वडा नं. ११ का सचिव भिमदेव शर्माको अध्यक्षतामा भएको कार्यक्रममा वातावरण महाशाखाका प्रमुख वरिष्ठ इञ्जिनियर चन्द्रप्रसाद काफ्लेले कार्यक्रमको औचित्यमाथी प्रकास पारेका थिए । कार्यक्रमका फोकल पर्सन इञ्जिनियर महेन्द्र गोदारले प्लाष्टिक प्रयोगले मानव स्वास्थ्यमा प्रतिकुल प्रभाव पार्ने भएकोले यसलाई विस्तारै न्युनिकरण गरेर जानुपर्ने धारणा राखे । प्लाष्टिक झोला तथा प्लाष्टिकजन्य गिलास निषेधका समस्या चुनौती एवम् बैकल्पिक उपायका वारेमा भएको खुला सवाल जवाफ कार्यक्रमको सहजीकरण सुरक्षा तथा निरीक्षण महाशाखाका प्रमुख बसन्त चालिसेले गरेका थिए ।

आगामी चैत्र मसान्तसम्म विभिन्न कार्यक्रमहरुलाइ अभियानका रुपमा सञ्चालन गरेर नगरवासीहरुलाई प्लाष्टिक प्रयोगका हानीबारे सचेतना प्रदान गर्दै पोखरालाई प्लाष्टिक झोला र प्लाष्टिकजन्य गिलास निषेधित क्षेत्र घोषणा गरिने पोखरा उप-महानगरपालिका कार्यालयका कार्यकारी अधिकृत झलकराम अधिकारीले बताएका छन् ।

उप-नगरपालिकाले प्लाष्टिक झोला तथा गिलास निषेध कार्यक्रमका लागि यसअघि नै १, २, ३, ४ र २६ नं. वडाका सरोकारवालाहरु संग गत फागुन ११ गते तथा वडा नं. ५, ६, ७, ८ र ९ का सरोकारवालाहरु संग १२ गते अर्न्तक्रिया सम्पन्न गरिसकेको छ । अन्तर्क्रियाका अलावा विभिन्न सरोकारवाला निकायहरुसंग पनि उप-महानगरपालिकाले छलफल गर्दै आएको छ ।

पोखरा उपमहानगरपालिकाले २०६७ साउन १ गते पोखरालाई कालो प्लाष्टिकको झोला निषेधित क्षेत्र घोषणा गरेको थियो । सन् १९०७ मा अमेरिकाबाट उत्पादन सुरु भएको प्लाष्टिकको झोला अहिले विश्वभर फैलिएको छ । प्लाष्टिकको झोला कुहिन एक सय बर्ष लाग्ने, प्लाष्टिकले माटोको गुणस्तर घटाउने, प्रदुषण बढाउने र मानव स्वास्थ्यमा समेत नकारात्मक असर पार्ने गर्छ । पोखरा उपमहानगरपालिकाले आगामी चैत्र १५ सम्म मौजाद रहेका प्लाष्टिक झोला तथा गिलास ब्यबस्थापन गर्न व्यावसायीलाइ आग्रह गरेको छ ।

# विद्यालय अनुगमन

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा १३ फाल्गुन ।**

वडा नागरिक मञ्च, पोखरा-११ ले वडाभित्र रहेका सामुदायिक विद्यालयहरूको अनुगमन गरेको छ । सामुदायिक विद्यालय अनुगमनका क्रममा वडा सचिव भीमदेव शर्मा, वडा नागरिक मञ्च संयोजक तीर्थकुमारी गुरुङ, सामाजिक परिचालक संगीता बराल, वडा नागरिक मञ्च व्यवस्थापन समिति सदस्य महावीर थापा, वडा नागरिक मञ्च सदस्य शिशुला बाँस्तोलासहितको टोलीले शिवशक्ति उच्च माविको अनुगमन गरेको हो । अनुगमनका क्रममा विद्यालय शिक्षा नीति अनुरुप चलेको नचलेको, विद्यालयमा शिक्षाको अवस्था, शिक्षक, विद्यार्थी र विद्यालयमा सम्पादन गरिने हरेक क्रियाकलापका विषयमा जानकारी लिइएको टोलीका सदस्य सामाजिक परिचालक संगीता बरालले जानकारी दिइन । विद्यालयको विषयमा जानकारी दिँदै प्राचार्य शम्भुप्रसाद बाँस्तोलाले सरकार र स्थानीय निकायले विद्यालयको संरचना र अन्य आवश्यकतामा ध्यान दिए अझ राम्रोसँग विद्यालय सञ्चालन गर्न सकिने बताए ।

# बानियाँको मुक्तकसंग्रह सार्वजनिक

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा १३ फाल्गुन ।**

प्रगतिशिल कवि राम बहादुर बाँनियाको मुक्तक संग्रह मेरा मुक्तकहरु सार्वजनिक गरिएको छ । आख्यान तथा लघुकथा लेखनमा ख्याति कमाएका बाँनियाको चौथो कृति स्वरुप मुक्तक बजारमा आएको हो ।

बाँनिया प्रकाशन पोखराले प्रकाशन गरेको संग्रहमा एक सय बीस वटा मुक्तक संग्रहित छन् । खासगरि पछिल्लो समय बढदै गएको खराब राजनीतिप्रति व्यङ्ग्य गरिनुका साथै देशप्रेमले भरिएका मुक्तकहरु समेत संग्रहमा समावेश गरिएको छ । जीवनका आरोह अवरोहमा भोगिएका भोगाइलाई मुक्तकको रुपमा पाठक माझ प्रस्तुत गरेको कवि बाँनियाले बताए ।

शिक्षण पेशामा समेत आवद्ध कवि बाँनियाले यस अघि यो जित कसको (लघुकथा संग्रह), गण्डकी क्षेत्रका लोककथाहरु, लघुकथा संग्रह प्रकाशन गरि सकेका छन् । विभिन्न शिक्षा र साहित्यिक सम्मान प्राप्त गरिसक्नु भएका कवि बाँनियाका नेपाली उखान कोष र कथा संग्रह प्रकाशनको तयारीमा छन् ।

# बालमन्दिर नदीपुरमा वादविवाद

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा १३ फाल्गुन ।**

ईन्ट्र्याक्ट क्लव अफ अन्नपूर्ण बालमन्दिरको संयक्त आयोजनामा बालमन्दिर उच्च मा.बि.नदीपरमा बादविवाद प्रतियोगिता सम्पन्न भयो । रोटरी स्थापनाको १११औं बर्षको उपलक्ष्यमा आयोजित प्रतियोगिता रोटरी क्लव अफ पोखरा अन्नपूर्णका अध्यक्ष कल्याण कर्माचार्यको सभापतित्वमा भएको थियो । कार्यक्रममा बिद्यालयमा अध्ययनरत बिभिन्न कक्षाका १२ जना बिद्यार्थीहरुले सहभागिता जनाएका थिए । प्रतियोगितामा अग्रता शर्मा प्रथम, आयशा थापा द्वितीय, गौरव अधिकारी तृतीय र कृति थापा सान्त्वना भएका थिए । विजयी विद्यार्थीहरुलाई क्लबले पूरस्कार र मायाको चिनो प्रदान गरेका थिए ।

क्लबका पूर्व अध्यक्ष तथा संयोजक दिनेश शंकर पालिखेले संचालन गरेको कार्यक्रममा ईन्ट्र्याक्ट क्लव अफ अन्नपूर्ण बालमन्दिरका अध्यक्ष विकास बसौला, बालमन्दिर उच्च माध्यमिक बिद्यालयका शिक्षक तिलक कार्की, प्राचार्य शशी बस्नेत, रोटरी क्लब अफ अन्नपूर्णका पूर्वअध्यक्ष कृष्णमान गुभाजु, सदस्य प्रकाश उदास र लक्की कार्की लगायतले आ-आफ्नो भनाइ राखेका थितए । विश्वमा १२० देशमा फैलिएको ईन्ट्र्याक्ट क्लव क्लवले युवाहरुको विकासमा विशेष ध्यान दिने गरेको दिनेश शंकर पालिखेले बताए ।

# रेडक्रस भरतपोखरीको साधारणसभा

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा १३ फाल्गुन ।**

नेपाल रेडक्रस सोसाइटी लेखनाथ-१७, भरतपोखरी उपशाखाको आठौं साधारण सभा सम्पन्न भएको छ । सभाको उद्घाटन गर्दै प्रमुख अतिथि नेपाल रेडक्रस सोसाइटी कास्की शाखाका उपसभापति डण्डराज शर्माले रेडक्रसका सात सिद्धान्त र मानवीय सेवा सेवा कार्यलाई आत्मसात गर्दै उपशाखा अगाडि बढेको बताए । साधारणसभामा गत बर्षको आय व्यय विवरण र आगामी बर्षको लागि प्रस्तावित आय-व्यय विवरण एवं गतबर्षको प्रगति प्रतिवेदन र आगामी बर्षमा गरिने कार्यक्रमको विवरण उपशाखाका सचिव सूर्यमोहन आचार्यले प्रस्तुत गरेका थिए । उपशाखाका सभापति यज्ञप्रसाद अधिकारीको सभापतित्वमा सम्पन्न कार्यक्रममा समाजसेवी रेडक्रसका आजीवन सदस्यहरु हरिप्रसाद गोर्खाली, वसन्तराज आचार्य, धनेश्वर अधिकारी केशव आचार्य लगायतले रेडक्रसले गरेका कार्यबारे बोलेका थिए ।

# गोल्डेनमा नृत्य

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा १३ फाल्गुन ।**

लेखनाथ नगरपालिका वडा नं. १२, खुदी-ढुङ्गेपाटन स्थित गोल्डेन नेचर उच्च माध्यमिक विद्यालयमा एकल नृत्य प्रतियोगिता सम्पन्न भयो । विद्यार्थीहरूमा निहित प्रतिभा प्रष्फुटन उदेश्यले आयोपत प्रतियोगितामा पूर्व प्राथमिक तहका ४६ जना विद्यार्थी सहभागी थिए । प्रतियोगितामा सुशान्त बस्ताकोटीले प्रथम स्थान प्राप्त गर्न सफल भए भने सिम्रन सुबेदीले द्वितीय स्थान, बिदिप्ती अधिकारी र दिव्या सुबेदीले तृतीय स्थान र आयुष्मा कँडेलले सान्त्वना स्थान प्राप्त गर्न सफल भए । कार्यकमको संयोजन शिक्षिका शान्ति तिमिल्सिना र लक्ष्मी बगालेले गरेकी थिइन ।

## हार्दिक समवेदना

जन्मः वि.स.१९८५/03/04
स्वर्गारोहण वि.स.२०७२/११/02

**स्व. चीजकुमारी श्रेष्ठ**

नेवा मिसा पुचः कास्कीका उपाध्यक्ष (सांगठनिक) मेनका श्रेष्ठज्यूकी ममतामयी सासुआमा चीजकुमारी श्रेष्ठको दु:खद् निधन भएको आज १३औं दिनको पुण्य तिथिमा दिवंगत आत्माको चिरशान्तिको कामना गर्दै हार्दिक श्रद्धाञ्जली अर्पण गर्दछौं। साथै शोकसन्तप्त परिवारजनमा धैर्यधारण गर्ने शक्ति प्राप्त होस् भनि हार्दिक समवेदना प्रकट गर्दछौं ।

शान्ति उदास
अध्यक्ष एवं
**नेवा मिसा पुचः कास्की परिवार**

# सम्पर्क नहुने ठाउँबाट उड्दै गर्दा दुर्घटना भएको अनुमान

**पोखरा १३ फाल्गुन ।(एजेन्सी)**

जोमसोम उडानमा करिब ५ मिनेट जहाज सम्पर्क विच्छेद हुन्छ । घोरेपानीदेखि तातोपानी क्षेत्रमा कन्ट्रोल रुप र जहाजको सम्पर्क हुन नसक्ने हुँदा अनुमानकै भरमा उडाउनुपर्ने बाध्यता छ । यो ठाउँलाई हवाई उडड्यन क्षेत्रमा बफरजोन भनिन्छ । बुधबार पोखराबाट जोमसोमका लागि उडेको तारा एयरको जहाज पनि बफरजोनबाट उड्दै गर्दा दुर्घटनामा पर्‍यो । 'पोखरा र जोमसोमको टावरले पठाएको सञ्चार तरंगलाई अग्ला डाँडाले छेक्दा सम्पर्क नै हुँदैन,' पोखरा विमानस्थलका प्रबन्धक योगेन्द्रनाथ कुँवरले भने,-'पाइलटले आँखाले देखेकै भरमा जहाज उडाउँछन्, नेपालमा मात्रै नभई विश्वका विकट ठाउँमा यसरी नै उडाउने गरिन्छ ।' कुँवरका अनुसार पोखरा र जोमसोम उडान मार्गको बफरजोन 'भिएफआर' (भिजुअल फ्लाइट रुल्स) अनुसार उडान हुन्छ । प्रविधि हुन्थ्यो भने उपकरणको सहयोगमा उडान गरिन्थ्यो, तर पोखरा र जोमसोम रुटको बफरजोन आँखाले देखेको भरमा जहाज उडाउने गरिएको छ ।

कुँवरका अनुसार पोखरा-जोमसोम हवाई रुटमा घोरेपानीसम्म पोखरा टावरले सम्पर्क गर्छ र त्यसपछि जोमसोम विमानस्थल टावरलाई हस्तान्तरण गरिन्छ । घोरेपानीलाई ट्रान्सफर प्वाइन्ट भन्ने गरिएको छ ।

पोखराबाट घोरेपानी पुग्न जहाजलाई १० मिनेट लाग्छ । घोरेपानी कटेपछि अन्तिम ४-५ मिनेटमा सम्पर्कमा आएर जहाज जोमसोममा अवतरण हुन्छन् । घोरेपानी कटेको जहाजको बीचमा ५-६ मिनेट कतै पनि सम्पर्क हुँदैन र पाइलटले अनुमानकै भरमा उडाउँछन् । बुधबार बिहान बीचमै कुनै समस्या आएर तारा एयरको जहाज बफरजोनबाटै दुर्घटनामा परेको हुनसक्ने अनुमान गरिएको छ । ट्विनअटर जहाजले यो रुटमा २० देखि २१ मिनेटमा एकतर्फी उडान पूरा गर्छन् ।

ताराको जहाज बुधबार बिहान ७ बजेर ५० मिनेटमा पोखरा विमानस्थलबाट जोमसोमका लागि उडेको थियो । बिहान ८ बजेर ११ मिनेटमा जहाज जोमसोम विमानस्थलमा अवतरण गर्नुपर्ने भए पनि उडेको १० मिनेटपछि हराएको जहाज म्याग्दी दाना गाविसको सोलीघोप्टेमा दुर्घनाग्रस्त अवस्थामा भेटियो । कुँवरका अनुसार घोरेपानीमाथिको आकाशबाट जहाजले पोखरा विमानस्थल टावरसँग अन्तिमपटक सम्पर्क गरेको थियो । पाइलटले घोरेपानी माथि १० हजार ५ सय फिटमा उडिरहेको बताएका थिए ।

पोखराबाट जोमसोमका लागि उडेका जहाज मौसम खराब हुँदा घोरेपानीबाटै पोखरा फर्किने गर्छन् । बुधबार मौसम खराब भएको बारे तारा एयरले कुनै पनि संकेत पोखरालाई नगरेको विमास्थलले जानकारी दिएको छ । विमानस्थलबाट करिब १० किलोमिटर दुरी स्पस्ट देखिएको र जहाजका लागि यो दुरी पर्याप्त हुने जोमसोम विमानस्थलका एयर ट्राफिक कन्ट्रोलर सूर्यबहादुर खत्रीले बताए । खत्रीका अनुसार पोखरा-जोमसोम रुटमा घोरेपानी कटेपछि जहाजले बादल देखे केही दायाँबायाँ गर्न सक्छन् । 'बफरजोन' भएकाले दायाँबायाँ गर्ने सम्भावना बढी हुने खत्रीले बताए । 'बफरजोनमा आँखाको भरमा उडान गर्दा जहाज अर्कै क्षेत्रमा पुगेको हुनसक्छ,' उनले भने,-'जहाजको यो नियमित रुट होइन । घोरेपानीमाथि आउँदा मौसम खुला भएकाले पनि अन्त जान आवश्यक थिएन् ।'

पोखराबाट जोमसोमका लागि उडेको नाइनएन ए एचएच कल साइनको ट्विनअटर जहाज दिउँसो जलिरहेको अवस्थामा भेटिएको थियो । दुर्घटनामा परी सबैको ज्यान गएको छ । जसमध्ये कृष्ण थकाली विनिता भट्टचन र उनको छ महिने बालकको शव घटनास्थलबाटै आफन्तको जिम्मा लगाइएको छ भने बाँकी शव पोखरा ल्याइएको छ ।

# दीपेश मेमोरियल 'ए'लाई फुटवल उपाधि

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा १३ फाल्गुन ।**

दीपेश मेमोरियल स्मृति सेभेन ए साइड फुटबल प्रतियोगिताको उपाधि आयोजकले जितेको छ । बिहीबार पोखरामा सम्पन्न फाइनलमा आदर्श युथ क्लबलाई १-० गोलअन्तरले पराजित गर्दै आयोजक दीपेश मेमोरियल ए ले उपाधिसहित नगद १ लाख रुपैयाँ, शिल्ड र मेडल पुरस्कार हात पार्‍यो । उपविजेता आदर्शले ४५ हजार रुपैयाँ पुरस्कार पायो ।

आयोजक क्लबका प्रदीप गुरुङ वेष्ट प्लेयर बन्दै नगद ५ हजार पुरस्कार पाए । वेष्ट डिफेन्सको उपाधि आदर्श युथका अनिल गुरुङ, वेष्ट मिडफिल्डरको उपाधि आयोजक टिमका टंक गुरुङ, वेष्ट कीपरको उपाधि आयोजककै दीपक कार्कीलाई दिइयो ।

खेल अवधिमा सर्वाधिक ६ गोल गरेका पुन टोल क्लबका सुजन शाही र लालीगुराँस एकताका गणेश थापालाई हाइस्कोररको उपाधि दिइएको प्रतियोगिता संयोजक विकास थापाले जानकारी दिए । खेलको २० मिनेटमा आयोजक टीमले गोलमा अग्रता कायम गरेको हो । प्रदीप गुरुङको क्रस विपक्षी आदर्शका डिफेन्स अनिल गुरुङलाई लाग्दा डिफेक्ट हुँदै गोलमा परिणत हुन पुगेको हो । १ गोलले पछि परेको आदर्श अन्तिम मिनेटसम्म बराबरीमा फर्किन नसक्दा अन्तत: उपाधि आयोजकलाई सुम्पिन पुगेको हो । विजेतालाई प्रमुख अतिथि कास्कीका प्रहरी प्रमुख प्रहरी उपरीक्षक घनश्याम अर्याल, आयोजक क्लबका नि.अध्यक्ष दीपेन्द्र पहारी, प्रतियोगिता संयोजक विकास थापा लगायतले पुरस्कार वितरण गरेका थिए ।

बैदाम युवा क्लबको आयोजनामा फागुन ७ देखि बाराही घाटमा सुरु प्रतियोगितामा ३२ टीमको सहभागिता रहेको सचिव निर्मल पहारीले बताए ।

# धादिङ सल्यानटार गाविसवासी संगठित

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा १३ फाल्गुन ।**

धादिङको सल्यानटार गाविसवासी पोखरामा संगठित भएका छन् । उनीहरुले धादिङ-पोखरा सम्पर्क समिति सल्यानटार इकाइ गठन गरेका छन् । पोखरामा रहेका सल्यानटारवासीको हालै सम्पन्न भेलाले समितिको अध्यक्षमा नवराज इटनीलाई चयन गरेको छ । अध्यक्ष इटनी धादिङ-पोखरा सम्पर्क समितिका कार्यसमिति सदस्य समेत हुन् । समितिको वरिष्ठ उपाध्यक्षमा आइतबहादुर कुमाल, उपाध्यक्षमा श्रीप्रसाद कुमाल, सचिवमा राजु थापा, सह-सचिवमा ईश्वर कुमाल, कोषाध्यक्षमा भुपेन्द्र बुर्लाकोटी, सह-कोषाध्यक्षमा प्रेमबहादुर कुमाल र सदस्यहरुमा लिलाबहादुर कुमाल, तिलकबहादुर कुमाल, अम्मरबहादुर कुमाल, नारायण कुमाल, धनकुमार श्रेष्ठ, सुरेश सुरखेती र कृष्ण नेपाली रहेका छन् । यस्तै समितिको सल्लाहकार हरुमा लक्ष्मण कुमाल, चित्रबहादुर कुमाल र रामबहादुर कुमाल रहेका छन् ।

भेलामा प्रमुख अतिथि धादिङ-पोखरा सम्पर्क समितिका सल्लाहकार परिषद सदस्य वेनी पाठकले आपसी भाइचारा स्थापित गर्न पनि संगठित हुनु अपरिहार्य रहेको स्पष्ट पारे । उनले लोपोन्मुख कुमाल जातिको बाहुल्य रहेको सल्यानटार समितिले सबैलाई एकढिक्का बनाउँदै समितिको सबै गतिविधिमा महत्वपूर्ण योगदान पुऱ्याउने विश्वास व्यक्त गरे ।

धादिङ-पोखरा सम्पर्क समितिका सल्लाहकार एवं आगिन्चोक इकाइका अध्यक्ष हरि पन्तले धादिङवासीलाई एकत्रित, संगठित हुँदै सामासजक उत्तरदायित्व वहन गराउन पनि समिति गठन अपरिहार्य रहेको भन्दै सल्यानटार समिति सशक्त ढङ्गले अघि बढ्ने विश्वास व्यक्त गरे । सल्यानटार इकाइ समिति गठनसंगै धादिङ-पोखरा सम्पर्क समिति अन्तर्गत इकाइको संख्या ५ पुगेको छ । यसअघि नलाङ, खरी, आगिन्चोक र ढोला इकाई समिति गठन भइसकेको छ । धादिङ-पोखरा सम्पर्क समितिले पोखरामा रहेका धादिङका एउटै गाविसवासीलाई संगठित गराउनका लागि इकाइको मान्या दिंदै आएको छ । धादिङ समितिले विधानमै स्पष्ट पारि इकाइ गठनका लागि औपचारिक बाटो खोलिदिखएको छ ।

# महायज्ञको तयारी

**पोखरा १३ फाल्गुन ।**

महाशिवरात्री पर्वको अवसरमा ब्रह्माकुमारी ईश्वरीय विश्व विद्यालयले सात दिवसीय श्रीमद् भगवद्गीता ज्ञान महायज्ञको आयोजना गर्ने भएको छ । यही फागुन २७ गतेदेखि चल्ने महायज्ञ संस्थाको पार्दी शाखामा हुनेछ । निराकार परमपिता परमात्माले सृष्टिको अन्तकालमा सम्पूर्ण मानवआत्माको सुख-शान्तिको लागि दिएको सत्य गीता ज्ञानलाई राजयोगिनी ब्रह्माकुमारी अप्सरा दिदीले वाचन गर्नेछिन् । श्रीमद्भगवद् गीता वाचन गर्ने नेपालकै पहिलो ब्रह्माकुमारी उनले कार्यक्रममा गीताको माध्यमबाट मानिसका व्यक्तिगत, पारिवारिक एवं व्यवसायिक लगायतका समस्यहरुको व्यवहारिक एवं वैज्ञानिक समाधान दिने बताइन्छ ।

# प्याराग्लाईडिङ प्रतियोगिताको तयारी पुरा

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा १२ फाल्गुन ।**

साहसिक खेलकुदको राजधानी पोखरामा शनिबारदेखि सुरु हुने प्याराग्लाइडिङको प्रि-वर्ल्ड कप तथा खुल्ला नेपाल प्याराग्लाईडिङ प्रतियोगिताको तयारी पुरा भएको छ । फागुन २२ गतेसम्म संचालन हुने प्रतियोगिताको तयारी पुरा भएका आयोजक नेपाल हवाई खेलकुद संस्था पोखरा (ना) का अध्यक्ष योगेश भट्टराईले बताए ।

नेपाल खुल्ला प्याराग्लाईडिङ प्रतियोगिताको १७औं पटकसम्म निरन्तर रुपमा संचालन हुँदै आएकोले अवस्थामा आगामी बर्ष नेपालमा प्याराग्लाईडिङ खेलको विश्वकप हुने तयारी स्वरुप प्रि-वर्ल्डकप आयोजना हुन लागेको भट्टराईले जनाए । नेपाल पर्यटन वोर्डको प्रवर्द्धनमा संचालन हुने प्रतियोगितामा सहभागी हुन अन्तिम नाम दर्ता भने शुक्रबारसम्म हुने भएको अध्यक्ष भट्टराईले जनाए ।

पोखराको आकासमा हुने प्रतियोगितामा नेपाल सहित करीब ३५ राष्ट्रका एक सय ५० प्याराग्लाईडिङका पाईलटहरु सहभागि हुने भएको सचिव एवं प्रि-वर्ल्ड कपका संयोजक कृष्ण प्रसाद भण्डारीले बताए । प्रतियोगितामा मित्रराष्ट चिन, भारत र एशियाली मुलुक तथा युरोपेली मुलुकबाट समेत प्याराग्लाईडिङका पाईलटहरु सहभागी हुने भएको भण्डारीले जनाए । डेढ सय राष्ट्रका २ सय बढी पाईलटहरुबाट उनीहरुको ऱ्याङकिङको आधारमा छनौट भएको प्राविधिक संयोजक रविन गुरुङले बताए । उनका अनुसार प्रि-वर्ल्ड कपको मान्यता पाउनको लागि न्यूनतम तीन दिनको पुरा उडान तथा तीन दिन मौसम खुल्नु पर्ने हुन्छ । नेपाल खुल्ला प्यारग्लाईडिङ प्रतियोगिता सहित ५ वटा ईभेण्टमा प्रतिष्पर्धा हुँदैछ । खुल्लातर्फ विजेताले ५० हजार, उपविजेताले ४० हजार, तेश्रो स्थान हासिल गरेको विजेताले ३० हजारको साथमा ट्रफी मेडल प्रमाणपत्र वितरण गरिने भएको छ ।

त्यसैगरी नेपालीहरु बीचको प्रतिष्प्रर्धामा विजेताले ३० हजार, उपविजेताले २० हजार, तेश्रो हुनेले १० हजार र सान्त्वना हुने दुई जनालाई जनही ५/५ हजार साथमा ट्रफि वितरण हुने भएको हो । महिला र स्पोर्ट क्लासतर्फको विजेतालाइ जनहि ३०/३० हजार, उपविजेतालाई २०/२० हजार र तेश्रो हुनेलाई १०/१० हजार साथमा ट्रफि वितरण हुने भएको छ भने वेष्ट डेव्यु नेपाली विजेतालाई ट्रफि मेडलको साथमा पुरस्कार वितरण गरिने भएको छ ।

# लेखनाथ महोत्सवमा दर्शक खचाखच

**पोखरा १२ फाल्गुन ।**

लेखनाथमा जारी लेखनाथ महोत्सवमा दर्शकको चाप बढ्दै गएको छ भने कारोबारमा समेत बृद्धि भएको छ । महोत्सवको नवौ दिन बिहीबार२० हजार दर्शकले महोत्सवको अवलोकन गरे भने करिब २ करोड रुपैयाँको कारोबार भएको प्रचार प्रसार उपसमितिका संयोजक भरतकुमार अधिकारीले जानकारी दिए । अधिकारीले अहिलेसम्म १२ करोडको रुपैया बराबरको कारोबार भएको बताए । महोत्सवमा अटोदेखि घरायसी सामाग्रीको कारोबार भएको छ, अधिकारीले बताए । महोत्सवको स्टेजमा कलाकार बद्री पंगेनीले आयोजक र प्रायोजकलाई स्टेजमा छमछमती नचाएका थिए । पगेनीलाई राजन ठकुरी, कृष्ण सुवेदी, प्रेम बस्याल, शर्मिला गुरुङ्ग, कल्पना दाहाल र युविना गुरुङ्गले साथ दिएका थिए । साँझ पखको पप कर्न्सटमा मेलिना राई, रमेश भट्टराई र सुनिल गिरी र मिलन अमात्यले युवा दर्शकलाई तानेका थिए । हाँस्य व्यङ्ग तर्फ पोखरेली माग्ने बढा र धुर्मुसले मनोरञ्जन दिलाएका थिए । शुक्रबार चर्चित गायक पशुपति शर्मा, राजन ठकुरी, माधव चापागाइ, कल्पना दाहाल, ज्योति लोहनी, जानकी मगर र पप तर्फ सुगम पोखरेलले दर्शकलाई मनोरन्जन दिनेछन् । महोत्सवमा गण्डकी तारा प्रतियोगितामा १० जनाबाट सात जना छनौट भएका छन् । प्रतियोगितामा सुनिल गुरुङ्ग, अनिल वि.क, राम घर्तिमिरे, अदिती शर्मा, कुशल पोखरेल, सोनु कुमार वि.क र आमकाजी थापा रहेका छन् । यसैगरी चाइल्ड ट्यालेन्ट सो मा ५२ जना प्रतियोगिलाई पछि पार्दै दश जना बालबालिका अन्तिम प्रतिस्पर्धाका लागि छनौट भएका छन् । गायन र नृत्य विधामा गरी पाँच पाँच जना छनौट भएको संयोजक ऋषिराम जमरकट्टेलले जानकारी दिए । गायन तर्फ न्यूलाइट वोर्डिङ स्कुलका अंसु गुरुङ्ग, गोगन उच्च मा.विका रंजित वि.क, स्माइल हेभेनका दिक्षा वि.क, मदरल्याण्डका शिक्षा कार्की र बागमारा एकेडेमीका करुणा सुनार रहेका छन् ।

# अखिलमा गण्डकीबाटमात्र १८ जना

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा १३ फाल्गुन ।**

अनेरास्ववियूको भरखरै सम्पन्न २२औं राष्ट्रिय महाधिवेशनमा केन्द्रीय नेतृत्वमा कास्की जिल्ला र गण्डकी अञ्चलबाट महत्वपूर्ण स्थान ओगट्न सफल भएको छ । संगठनको केन्द्रीय उपाध्यक्षमा पृथ्वीनारायण क्यम्पसका स्ववियु सभापति रश्मि आचार्य निर्वाचिन भएका छन् । त्यस्तैगरी सचिवालय सदस्यमा गण्डकीबाट जुन तामाङ, नरेश रोकाया र सरिता पुरी निर्वाचित भएका छन् । त्यस्तै, अनुशासन आयोगमा उम्मेद्वारी दिएका कास्कीका पूर्व जिल्ला अध्यक्ष अर्जुन अधिकारी देश भरिकै दोस्रो लोकप्रिय मतका साथ विजय भएका छन् । भूगोल तर्फको केन्द्रीय सदस्यमा गण्डकी अञ्चलबाट लमजुङका दिव्यचन्द्र सोती, कास्कीबाट भरतमान गुरुङ र आशिर्वाद सुवेदीका साथै महिला तर्फ रीता ढकाल र ज्ञानु भुजेल निर्वाचित भएका छन् । अञ्चलबाट निर्वाचित राष्ट्रिय परिषद् सदस्यहरूमा अर्जुनप्रसाद अधिकारी, क्षितिज पौडेल, गणेश रोकाया, विपिन पराजुली, सुदिप पन्त, सन्ध्या अधिकारी, प्रतिक्षा पौडेल, सकिला गुरुङ रहेका छन् । सम्मेलनले एक सय ४१ सदस्य केन्द्रीय कमिटी, १३ सदस्य तीन ओटा आयोग, एक सय ४१ सदस्य राष्ट्रिय परिषद् निर्वाचित गर्ने प्रावधान रहेको छ ।

# प्रहरी...

*दिएका छन् । प्रहरी भित्रको आन्तरिक शुद्धिकरणमा जोड दिदै मानव अधिकारको सम्बर्द्धन र संरक्षणको लागि प्रतिबद्ध रहेको उनले बताए । सामाजिक विकृत, विसंगति बिरुद्ध विभिन्न संघ-संस्थासँगको सहकार्यलाई अघि बढाउने, सरकारी एवं गैरसरकारी निकायसँग समन्वयमा जोड दिने, लागुऔषध नियन्त्रण लगायतका बिषयमा उनले प्रतिबद्धता जनाएका छन् । आफ्नो कार्यकालमा कास्कीलाई शान्त र सुरक्षित जिल्लाको रुपमा स्थापित गर्ने प्रतिबद्धता जनाउदै उनले सबै क्षेत्रसँग सहयोगको अपेक्षा व्यक्त गरेका छन् । त्यस्तै चैत्र १ देखि ४ सम्म पोखरामा हुन लागेको सार्क विदेशमन्त्री स्तीरय बैठकका लागि आवश्यक सम्पूर्ण सुरक्षा व्यवस्था मिलाउने गरी तयारी भैरहेको उनले जानकारी दिए । सुरक्षित र अपराध मुक्त कास्कीको लागि पत्रकारहरु सँग सहयोग गर्न उनले आग्रह समेत गरे ।*



सुनौलो पब्लिकेशन प्रा.लि.द्वारा प्रकाशित गोल्डेन न्यूज राष्ट्रिय दैनिकका लागि अध्यक्ष /प्रधान सम्पादक **गंगाधर पराजुली**, निर्देशक **हरिमणि बराल**, संस्थापक सम्पादक **रीता गुरुङ**
कार्यालय : चिप्लेढुंगा (सुनौलो भवन), पोखरा, फोन:०६१-५३९४५५, फ्याक्स : ५२२२२२, Email : goldennewspkr@gmail.com, Website: www.goldennews.com.np, मुद्रण **गोल्डेन अफसेट प्रेस**, चिप्लेढुंगा, पोखरा